# प्रतिलिपि अधिकार

**आत्मा र आकाशबीचको संवाद**

(खण्डकाव्य)

लेखक: डा. नवराज सुब्बा



संस्करण: प्रथम (२०८१)

**ISBN: 9789937-9810-6-4**

प्रकाशक: हाम्रो आइडिया, विराटनगर, नेपाल।

आवरण फोटो साभार-, टिएन्को८५, पिक्साबे डटकम

# मङ्गलाचरण

## आह्वान

हे! युमा साम्माङ[1], हे! थेबा साम्माङ[2]!
हे! पृथ्वीकी आमा, आकाशका पिता!
हे! अग्नि, हावा, जल र धर्तीका साक्षीहरू!
तिमीहरूका आत्मा हामीभित्र जागोस्,
तिमीहरूका लय हामीभित्र गुञ्जियोस्!

## सृष्टिको प्रथम कम्पन

जहाँ अन्धकारमात्र थियो, जहाँ मौनमात्र थियो,
त्यहाँ अचानक पहिलो लय जन्मियो!
त्यस लयसँगै पहिलो स्पन्दन,
त्यस स्पन्दनसँगै पहिलो गति,
त्यस गतिसँगै पहिलो उज्यालो!

## पर्वत, नदी र पवनको आह्वान

हे! तुङदुङ्गे[3] जाग!
पहाडको चुचुरोमा  तिम्रो पाइला परोस्!
नदीको गीतमा तिम्रो नाम गुन्जियोस्!
हावाको तालमा तिम्रो कथा बोलोस्!

---

[1] किरात लिम्बू दृष्टिकोणमा सर्वोच्च मातृदेवी
[2] किरात लिम्बू दृष्टिकोणमा सर्वोच्च पितृदेव
[3] खण्डकाव्यका नायक तथा मुख्य पात्र

हे! बादलका सारथीहरू, हिउँका पालकहरू,
तुङ्दुङ्गेको बाटो उज्यालो पार!
तुङ्दुङ्गेको यात्रा शाश्वत राख!
अनन्त सागरजस्तै गहिरो बनाऊ!
अनन्त आकाशजस्तै उन्मुक्त बनाऊ!

**आशीर्वाद र संकल्प**

तुङ्दुङ्गे नाच! तुङ्दुङ्गे हाँस!
तिम्रो पाइला रोकिएला, तर लय रोकिने छैन!
तिम्रो शब्द मेटिएला, तर आवाज हराउने छैन!
यो यात्रा तिम्रो मात्र होइन,
यो यात्रा हाम्रा पुर्खाहरूको हो!
यो यात्रा पृथ्वीको हो, आकाशको हो!
यो यात्रा कहिल्यै समाप्त हुने छैन!

# पुस्तक परिचय

आत्मा र आकाशबीच संवाद — एक दार्शनिक खण्डकाव्यको खोजयात्रा।

"आत्मा र आकाशबीच संवाद" एक गहिरो दार्शनिक, सांस्कृतिक र काव्यात्मक खण्डकाव्य हो, जुन सृष्टिको उत्पत्ति, पाँचतत्वको रहस्य, आत्माको चिन्तन, र अन्ततः चैतन्यको मुक्तिपथ समेटिएको विराट चेतनाको कथा हो। यस काव्यमा प्रस्तुत संवाद केवल शब्दको तहमा सीमित छैन — यो आत्मा र ब्रह्माण्ड, भौतिक र आध्यात्मिक, ध्वनि र मौनता बीचको संवाद हो।

कविले यो कृति किरात सांस्कृतिक मुन्धुमिक दर्शन र मानवीय चेतनाको चिरन्तन खोजलाई आधार बनाएर रचेका छन्। यो केवल एउटा आख्यानिक वा काव्यिक यात्रा होइन — यो आफ्नै आत्मासँगको संवाद, र अनन्त आकाशसँगको अन्तर्मिलन हो।

**संरचना र विषय–विस्तार**

यस खण्डकाव्यलाई पाँच सर्गहरूमा बाँडिएको छ, र प्रत्येक सर्गले जीवनका विभिन्न चेतना तहलाई उद्घाटित गर्छ:

*(१) ब्रह्माण्डको मौनता* – सृष्टिको सुरुवात शून्यताबाट हुन्छ। पहिलो स्पन्दन, पञ्चतत्वको जन्म, प्रकृतिको नृत्य, र मुन्धुमको पहिलो स्वर ब्रह्माण्डको आधार प्रस्तुत गर्छ।

*(२) तुङदुङ्गेको यात्रा र पवित्र ज्ञान* – नायक तुङदुङ्गे प्रकृति र पाँचतत्वसँग संवाद गर्दै आत्म–चेतनाको मार्गमा अगाडि बढ्छन्। पृथ्वी, जल, आगो, हावा, र आकाशले जीवनका गूढ पाठ दिन्छन्।

*(३) संघर्ष र महायुद्ध* – यो सर्गमा बाह्य अन्धकार र भित्री द्वन्द्वसँगको युद्ध चित्रित छ। आत्माको गहिरो युद्ध, पृथ्वीका आँसु, र पुनर्जन्मको पीडा मार्फत् चेतनाको परीक्षा हुन्छ।

*(४) धर्म, कानुन, र परम्परा* – सृष्टि–धर्म, न्यायबोध, र सांस्कृतिक परम्पराको जरा केलाइन्छ। सत्यको खोजी र परम्परा–पुनरावलोकनको द्वन्द्व यहाँ केन्द्रमा छन्।

*(५) अन्तिम शिक्षा र आकाशतर्फ यात्रा* – आत्मबोधको चरम क्षणमा तुङ्दुङ्गे पाँचतत्वसँग अन्तिम संवाद गर्छन्, र अन्ततः आत्माको उडान हुन्छ — शून्यमा मिलेर अनन्ततामा रूपान्तरण हुन्छन्।

**शिर्षकको अर्थ र प्रतीक**

“आत्मा र आकाशबीचको संवाद” आफैंमा एक गहन दर्शन बोकेको शीर्षक हो। "आत्मा" यहाँ व्यक्तिको आन्तरिक चेतना, भाव, संघर्ष र खोजको प्रतीक हो। "आकाश" भनेको अनन्तता, ब्रह्माण्डीय सत्य, शून्य र मुक्तिको बिम्ब हो।

यी दुईबीचको संवाद भनेको आत्मा र सृष्टिको मूल स्रोतबीचको सम्बन्ध पुनःस्थापनाको प्रक्रिया हो। यही प्रक्रिया यस काव्यको मूल प्रेरणा र प्रवाह हो।

**भाषा, शैली र सांस्कृतिक सन्दर्भ**

कविले प्रयोग गरेको भाषा अत्यन्त सांकेतिक, विम्बात्मक र दार्शनिक छ। किरात मुन्धुम परम्पराबाट लिइएका शब्दहरू —

च्याब्रुङ/ढ्याङ्ग्रो[4], थुनछक्पा[5], थेबा, युमा साम्यो[6], मुन्धुम आदि — ले यो काव्यलाई सांस्कृतिक गहिराइ र मौलिकता दिन्छ।

छन्दको प्रयोगमा मुक्त लय, लयात्मकता, र पुनरावृत्तिमार्फत् उत्पन्न भएको भावध्वनिले पाठकलाई गीतात्मक प्रवाहमा डुबाउँछ। कतिपय भागहरू 'जप शैली'मा छन्, जसले मौखिक संस्कृतिको छायाँ बोकेको देखिन्छ। कवि फेदाङ्बा/साम्बाको भेषमा उभिएका छन्।

## लेखन प्रेरणा र उद्देश्य

कविको प्रेरणा आफ्नो जातीय चेतनाको गहिरो आत्मबोधसँग गाँसिएको देखिन्छ। उहाँले किरात दर्शनलाई केवल धार्मिक र सांस्कृतिक विषय होइन, एक वैश्विक दार्शनिक प्रणालीको रूपमा पुनर्व्याख्या गर्नुभएको छ।

*यस खण्डकाव्यको उद्देश्य:*

- आदिम दर्शन र आधुनिक चेतनाको संवाद गराउनु,
- प्रकृति र आत्माको सम्बन्धलाई गहिरो रूपमा बुझाउनु,
- र पाठकलाई आफ्नो आत्मा र आकाशसँग कुरा गर्न प्रेरित गर्नु हो।

---

[4] च्याब्रुङ लिम्बू समुदायको पवित्र दुईमुखे ढोल हो, जुन विशेषतः धार्मिक नाच (च्याब्रुङ नाच) र सांस्कृतिक अवसरहरूमा बजाइन्छ। यसैगरी ढ्याङ्ग्रो किरात समुदायका शामन (फेदाङ्बा/साम्बा)हरूले प्रयोग गर्ने एकमुखे ढोल हो, जुन मुन्धुम वाचन, झारफुक, र आध्यात्मिक अनुष्ठानहरूमा प्रयोग हुन्छ।

[5] थुनछक्पा लिम्बू दार्शनिक र सांस्कृतिक दृष्टिकोणमा सृष्टिपूर्वको मौन र निर्गुण अवस्था हो—जुन फूलको कोपिलाजस्तो हुन्छ, जसले अझै फक्रिन बाँकी छ, तर भित्रै सम्पूर्ण सृष्टिको बीज बोकेको हुन्छ। फूल लिम्बू सांस्कृतिक प्रतीकहरूमा पवित्रता, सम्भावना र आत्मिक ऊर्जाको प्रतीक हो। थुनछक्पा त्यो अवस्था हो, जहाँ समय र शब्दभन्दा परको मौनता हुन्छ, र जहाँ तागेरा निङ्वाफुको चेतना गहिरो निद्रामा लयबद्ध हुन्छ। संक्षेपमा, थुनछक्पा त्यो फूल हो—जो संसारलाई स्पर्श गर्न आतुर भएर मौन र अदृश्य रूपमा बाँचिरहेको छ।

[6] साम्यो किरात लिम्बू संस्कृतिमा प्रयोग हुने धार्मिक प्रतीकात्मक सामग्री हो, जुन मुन्धुमीय कर्मकाण्डमा प्रयोग गरिन्छ। यो प्रायः बाँस, धागो, पात, फूल वा प्राकृतिक वस्तुहरूबाट बनाइन्छ। साम्योले आदिम आत्मा, प्रकृति र पुर्खासँगको सम्बन्ध दर्शाउँछ, र शमन/फेदाङ्बाले गर्ने विधिले मानव र आत्मिक दुनियाँबीचको सेतुको काम गर्छ।

## निष्कर्ष: संवादबाट उदाएको यात्रा

"आत्मा र आकाशबीच संवाद" एक साहित्यिक साधना हो। यो केवल तुङ्दुङ्गेको कथा होइन — यो प्रत्येक पाठकको कथा हो, जो आत्मा र ब्रह्माण्डबीच गुमेको आवाज पुनः सुन्न खोजिरहेको छ।

यस काव्यले हामीलाई सम्झाउँछ — सृष्टिको मौनता सुन्न सकियो भने, आत्माले बोलेको सुनिन्छ। र जब आत्मा बोल्छ, आकाश उत्तर दिन थाल्छ।

यो खण्डकाव्यको अन्त्य "निष्कर्ष होइन, निरन्तरता" मा पुग्छ — जसले पाठकलाई एउटा अन्त्य होइन, नयाँ आरम्भतर्फ डोऱ्याउँछ।

# लेखकीय मन्तव्य

"आत्मा र आकाशबीच संवाद" मैले केवल लेख्नका लागि लेखिएको खण्डकाव्य होइन। यो मेरो अन्तरमनको लामो समयदेखिको मौन खोजको प्रतिफल हो। यस्तो खोज, जुन न कुनै किताबमा भेटिन्थ्यो, न कुनै विधिमा अडिन्थ्यो। म आफैंलाई, आफ्नो पूर्वज सभ्यतालाई, प्रकृतिलाई, र आकाशपारको चेतनालाई सोधिरहेथेँ — के अझै हामी संवाद गर्न सक्छौं? के आत्माले अझै बोल्छ? के आकाशले अझै उत्तर दिन्छ?

यस काव्यले त्यही सम्भावनाको ढोका खोल्ने प्रयास गरेको हो — जहाँ शब्दहरू मौनतातर्फ फर्कन्छन्, र मौनता पुनः संवाद बन्छ।

यस खण्डकाव्यको मूल प्रेरणा मेरो किरात लिम्बू सांस्कृतिक चेतना हो। किरात मुन्धुम परम्पराले दिएको जीवन दृष्टि — जहाँ प्रकृति, आत्मा, र सृष्टिबीच एक अविच्छिन्न सम्बन्ध हुन्छ — त्यो दर्शनलाई मैले आधुनिक भाव–भाषामा ढाल्ने कोशिस गरेको छु। मुन्धुमका कथा, तत्त्वका विम्बहरू, च्याब्रुङको ताल, थेबा, युमा साम्योको उपस्थिति, थुनछक्पा फूलजस्ता सांस्कृतिक प्रतीकहरू मेरो कवितामा केवल सजावट होइनन् — ती मेरो चेतनाका आधारशिला हुन्।

यस काव्यमा मुख्य पात्र “तुङदुङ्गे” केवल पात्र होइन, एक प्रतीक हुन् — हाम्रै भित्रको सोध, द्वन्द्व, यात्रा र आत्मबोधको। तुङदुङ्गेको यात्रामा हामी सँगै हिंड्छौं — शून्यबाट स्पन्दनसम्म, अन्धकारबाट उज्यालोसम्म, र पृथ्वीबाट आकाशसम्म। ती पाँचतत्त्वहरू — पृथ्वी,

जल, आगो, हावा र आकाश — केवल भौतिक तत्त्व होइनन्; ती जीवनका पाँच शिक्षालय हुन्।

म यस खण्डकाव्यमार्फत् जीवनको गहिरो प्रश्नहरू उठाउन चाहन्थेँ —
*अस्तित्वको सार के हो?*
*आत्मा र ब्रह्माण्डबीचको सम्बन्ध के हो?*
*हामी किन छुट्टियौँ प्रकृतिबाट, र कसरी फर्किन सक्छौं त्यो स्रोततर्फ?*

आजको यान्त्रिक युगमा, जहाँ मानिस प्रविधिमार्फत् बाँधिएको छ तथा आत्माबाट छुटिएको छ, यस्तो संवाद आवश्यक छ। यस खण्डकाव्य लेख्नुको तात्पर्य त्यही हो — पाठकलाई आफूभित्र फर्कने यात्रा सुरु गराउनु।

मैले यो यात्रा कुनै निष्कर्षमा टुङ्ग्याएको छैन। किनभने मलाई लाग्छ — आत्मा र आकाशबीचको संवाद कहिल्यै समाप्त हुँदैन। त्यो अनन्त छ, बगिरहन्छ, बदलिरहन्छ, र हामीलाई पनि बदलिरहन्छ।

यसकारण अन्तिम सन्देश दिन चाहन्छु —
"निष्कर्ष होइन, निरन्तरता"।
हामी सबै यात्रारत छौं, केवल यात्राको गहिराइ फरक–फरक छ।

# नायक परिचय

सुदूर पूर्वी नेपाली पहाडी कन्दराहरूको विचरण गर्ने,
शिखरबाट शिखरतर्फ आत्माको यात्रा गर्ने,
नदीझैँ बग्ने र वायु झैँ उड्ने,
किरात समुदायमा जन्म लिएको,
एक साहसी पथिक— तुङदुङ्गे।

उनले केवल पृथ्वीको बाटो मात्र हिँडेका छैनन्,
आत्माको उडान पनि भरेका छन्।
उनी केवल मानव होइनन्,
सम्भावनाहरूको निरन्तर यात्रा हुन्।

# वस्तु निरूपण

यो खण्डकाव्य, केवल शरीरको यात्रा होइन,
मन, आत्मा र अस्तित्वको खोज हो।
यो पथिकको कथामात्र होइन,
समस्त चेतनाको जागरणको गाथा हो।

यो यात्रा केवल पृथ्वीको धूलोसम्म सीमित छैन,
यो यात्रा अन्तरिक्षदेखि अन्तरात्मासम्म पुग्छ।
यो यात्रा तुङदुङ्गेको मात्र होइन,
हामी सबैको दिव्य-सम्वाद हो।

# लेखन प्रेरणा

यस काव्यको लेखन,
विस्मृत पदचिन्हहरू खोज्ने प्रयास हो।
यस काव्यको सिर्जना,
आफ्नै आत्मालाई चिन्न खोज्ने प्रयत्न हो।

यो तुङदुङ्गेको कथा मात्र नभई,
हजारौं वर्षदेखि गूढ सत्य खोज्नेहरूको गाथा हो।
पुस्तौं-पुस्तासम्म भुलिएका,
अस्तित्वका प्रश्नहरूको खोज हो।

# छन्द, शैली र भाषा सम्बन्धी सङ्केत

**१. छन्द**

- स्वतन्त्र/मुक्त छन्दमा आधारित, तर कतिपय स्थानमा लयात्मकता र अन्त्यानुप्रासयुक्त पदावली प्रयोग।
- किरात परम्पराको मौखिक वाचन शैलीलाई ध्यानमा राखी लयात्मक प्रवाह सिर्जना गर्ने प्रयास।
- वर्णिकभन्दा मात्रिक प्रवृत्तिको झल्को — कतिपय अंशहरूमा सममात्रिकता देखिन्छ।
- फेदाङ्बा/साम्बा/नँसोङ[7] शैलीमा प्रचलित कथात्मक-गीतात्मक लयको प्रभाव।

**२. शैली**

- गाथात्मक शैली: प्रमुख पात्रको आध्यात्मिक यात्रा वर्णन गर्ने रूपमा कथा प्रवाह।
- द्रष्टा-दृष्टान्त शैली: मिथकीय र आध्यात्मिक बिम्बहरूको प्रयोगमार्फत् गहिरो तात्त्विक सन्देश प्रवाह।
- प्रतीकात्मक र रूपकप्रधान शैली: 'तुङदुङ्गे' पात्र स्वयम् जीवन-मार्गको प्रतीकस्वरूप प्रस्तुत।

---

[7] फेदाङ्बा: किरात लिम्बू समुदायका एक धार्मिक पूजारी वा शामन हुन्, जो झारफुक, पुर्खा पूजा, मुन्धुम वाचन आदि आध्यात्मिक विधि सम्पादन गर्छन्। उनी मानव र आत्मिक दुनियाँबीचको सेतु मानिन्छन्।

साम्बा: एकजना मुन्धुम वाचक र दार्शनिक मार्गदर्शक, जसले सृष्टिकथा, पुर्खाको इतिहास, र आध्यात्मिक ज्ञान मौखिक रूपमा सुनाउँछन्। साम्बा किरात मौलिक परम्पराका ज्ञान संरक्षक हुन्।

नासोङ: फेदाङ्बा वा साम्बालाई अनुष्ठानको बेला सहयोग गर्ने व्यक्ति हुन्। उनीहरू पूजाका सामग्री तयार पार्ने, मन्त्रोच्चारणमा साथ दिने आदि भूमिकामा सक्रिय रहन्छन्।

- कथामिश्रित काव्यात्मक शैली: आख्यान र काव्यबीच सन्तुलन।
- श्रमणीय र साङ्गोपाङ्ग वर्णनात्मक शैली: दृश्यचित्रण, प्रकृति, पात्रको मनोभाव र परिवेशलाई सूक्ष्म तरिकाले चित्रण।

**३. भाषा**

- खस नेपाली भाषामा प्रस्तुत काव्यमा किरात लिम्बू सभ्यता, संस्कार र शैली झल्काउने शब्दावलीको महत्वपूर्ण भूमिका र प्रयोग भएको।
- संस्कृत नजिकी शब्द सीमित प्रयोग, बढीमा प्राकृतिक, खस, किरात लिम्बू आदिवासीका मौलिक भाषिक शब्दचित्र।
- उच्च प्रतीकात्मकता र बिम्बात्मकता, उदाहरण. 'तुङ्दुङ्गे' = आत्मा/जिज्ञासु; 'पहाडको शिखर' = आत्मज्ञान आदिको बिम्ब।
- धार्मिक-आध्यात्मिक पदावलीको प्रयोग: विशेषतः किरात र प्रकृति-पूजक संस्कृतिको प्रतिबिम्ब।
- प्राक्-वैदिक शब्दकोश र मौखिक परम्परासँग सहमेल हुने कोशिस — 'युमा', 'थेबा'जस्ता शब्दहरू।

# विषय-सूची

# (१) शून्यताबाट उदाएको संसार

## शून्यको कथा

एक पटक शून्यतालाई कल्पनुहोस्,
ब्रह्माण्ड निदाएको त्यो क्षण सम्झनुहोस्।
न सूर्य थियो, न चन्द्रको उज्यालो,
न त तारा, न कुनै दिशाको संज्ञा।
न हावा, न पानी, न धर्तीको धून,
मात्र मौन थियो, शून्यको अटुट लय!

## सृष्टिको पहिलो स्पन्दन

तर, मौनताको छातीभित्र स्पन्दन चल्यो,
अन्धकारको ह्रदयभित्र लय झल्कियो।
न त नदि, न बादल, न कुनै सीमाना,
तर गति थियो, अनि लय थियो!
सृष्टि भित्रैबाट उम्लँदै थियो,
तत्वहरू स्वतन्त्र बन्दै थिए!

## प्रकाश र अन्धकारको खेल

एकापट्टि अन्धकारको अथाह महासागर,
अर्कोपट्टि पहिलो उज्यालोको आभा।
ओ... अन्तर्यामी स्वर जन्मिँदै,
सृष्टिको पहिलो ध्वनि गुन्जिँदै!
अदृश्य शक्ति गति लिन थाल्दै,
सृष्टिको रथ अघि बढ्दै!

## काव्यको नाद

हे! त्यो पहिलो स्पन्दन,
हे! त्यो पहिलो लय,
हाम्रो मुटुमा, हाम्रो रगतमा,
अझै गुन्जिरहेको छ, अझै नाचिरहेको छ!
हे सृष्टिका साक्षीहरू,
यो लय, यो ध्वनि कहिल्यै मर्दैन!

## (२) पहिलो स्पन्दन

हेऽऽ... हेर!
तागेरा निङ्वाफु[8].. तागेरा निङ्वाफु!
आँखा बिस्तारै खुल्दै छ,
झ्याउँरी फूल जस्तै न्यानो बिहानमा
धर्तीकै मुटु धडकिरहेको छ।

हेऽऽ... सुन!
तागेराको नयनभित्र
एक थुनिएको उज्यालो फुट्दै थियो –
सपनाभित्र बाँचेको स्वप्न,
बोल्न नपाएका देवताहरूको स्वास।

त्यो उज्यालोको चिरफारबाट
एक विचार झऱ्यो,
एक इच्छा गुञ्जियो –
सृष्टिको ढुङ्ग्राभित्र बज्यो
नयाँ कुनै ब्रह्मसङ्कल्प।

तागेराले भने—
"जो देख्छ,

---

[8] *तागेरा निङ्वाफु* किरात लिम्बू दर्शनमा एक स्वयम्भू, निराकार, अनादि सृष्टिकर्ता शक्ति हो — जसलाई सृष्टिको मूल स्रोत, आत्मा, प्रकृति र ब्रह्माण्डको चेतन शक्तिको रूपमा मानिन्छ। यो न त केवल देवी हो, न देवता, न त मानवाकार शक्ति— यो स्वयं ब्रह्माण्ड हो, जहाँबाट सम्पूर्ण अस्तित्व उत्पन्न हुन्छ। तागेरा निङ्वाफु स्रष्टा र सृष्टिकर्ता दुवै हो, जसले कुनै मूर्ति वा नाममा बाँधिनु पर्दैन, तर सबै वस्तु र प्राणीमा व्याप्त हुन्छ।
संक्षेपमा, यो मुन्धुमको श्वास हो, ध्वनिभित्रको मौनता हो, र सृष्टिको अदृश्य स्पन्दन हो।

ऊ नै स्रष्टा हो।
जो चाहन्छ,
ऊ स्वयम् ब्रह्माण्ड बन्छ।”

हेऽऽ... हेर! हेर!
त्यही उज्यालोको गर्भबाट
जन्मिन थाले —
पृथ्वी, आकाश, आगो र पवन,
जलको ज्यान,
आकाशको मुस्कान।

पञ्चतत्त्व – पाँच दाजुभाइ,
धरतीकी आमाबाट जन्मेका,
सगरमाथाको छाँया ओढेका,
तागेराको स्वास बनेर बगे।

## (३) पञ्चतत्वको जन्म

हेऽऽ... सुन! सुन सृष्टिको कथा,
पहिलो ढुकढुकी, पहिलो स्वास।

आकाश खुल्यो —
खुल्यो टाकुराबाट, शून्यबाट, सुस्केरा झैँ।
त्यसको विशाल निलो चोलीबाट
सृष्टिको सपना पलायो।

हावा चल्यो —
सिकारी जस्तो दौडियो,
रुखहरू हल्लिए,
पातहरूले जिउँदो कुरा गरे।

अग्नि सल्कियो —
दृष्टिमा चमक, मनमा ताप,
हिउँ र तुसारोलाई पगाल्दै,
बिउको गर्भमा जीवन रोप्दै।

पानी पर्‍यो —
निलो गुनगुन बोकेर झर्‍यो,
झरनाले गाएको गीत,
नदीको घाटमा बग्ने प्रार्थना।

माटो उठ्यो —

बिउँझियो गहिरो निद्राबाट,
धरती बन्ने संकल्प गर्‍यो,
काखमा अङ्कुर बोकेर।

हेऽऽ... हेर! हेऽऽ... हेर!
आकाश मुस्कायो,
सूर्य चम्कियो, चन्द्र झुल्कियो।
नदीहरू नाच्न थाले,
पर्वत गर्जन गर्न थाले,
वृक्षहरू हल्लिए —
जीवनको संगीतमा।

अग्नि, वायु, जल, माटो, आकाश —
यी पाँच दाजुभाइ, पाँच दिशा,
यी पाँच माने सृष्टिको बाँध।
यी पाँच बने देउता,
यी पाँच बने आत्माको सन्तुलन।

🔥 अग्निले भन्यो — "ऊर्जा म हुँ!"
💨 हावाले भन्यो — "गति म हुँ!"
💧 पानीले भन्यो — "जीवन म हुँ!"
🌍 माटोले भन्यो — "अस्तित्व म हुँ!"
☁ आकाशले भन्यो — "अनन्त म हुँ!"

## (४) पञ्चतत्वको खेल

हेऽऽ... सुन्नू! हेऽऽ... बुझ्नू!
पञ्च दाजु खेल्दै छन्,
सृष्टिको मैदानमा।
हेर! सुन! तिनीहरू बोल्दैछन्,
जुन बोली हो, तिमीभित्रको बोध।

🌍 माटोले भन्यो —
"तिमी उभिन सिक,
जरा गाड्न सिक,
अस्तित्वको गन्ध बोक!"

💧 पानीले भन्यो —
"तिमी बग,
रुन पनि जान,
तर जीवन भर बहनू!"

🌬️ हावा हाँस्यो —
"स्वास तिमी हौ,
गति तिमी हौ,
अदृश्य भएर पनि साथ देऊ!"

🔥 आगो बल्यो —
"प्रकाश तिमी हौ,
उमङ्ग तिमी हौ,

तिमीले नै बदल्छौ समय!"

☁ आकाश गुञ्जियो —
"तिमी अनन्त हौ,
तिमी भित्रका सबै समाउ,
शून्य जस्तो, तर पूर्ण!"

हेऽऽ... हेर, पञ्च तत्वको नाच!
माटोले छाल दियो —
हिड्ने बाटो बनायो।
पानीले ताल दियो —
बग्ने स्वर बनायो।
हावाले लय दियो —
स्वास सँगै गीत बगायो।
आगोले उमङ्ग दियो —
जीवनको ताप बढायो।
आकाशले रङ्ग दियो —
मनको आकास सजायो।

## (५) प्रकृतिको पहिलो नृत्य

हेऽऽ... हेर्नू! हेऽऽ... सुन्नू!
सृष्टिको पहिलो लय बग्दैछ,
प्रकृतिको पहिलो नाच देख्दैछौं।

🌍 माटो झसङ्ग बिउँझियो —
हेर! उसको छाती काँप्यो,
त्यही काँपाइबाट
पहाड उठे,
घाम चुम्ने टाकुरा बने।
उपत्यकाले बास खोल्यो,
आमा-जस्तै अँगालो फैलायो।

💧 नदी हाँस्यो —
छर्रर... गुञ्जायो स्वर!
पहिलो मुस्कान पानीको!
उसले आफ्नै बाटो कोर्‍यो,
शिला चिरेर, वन पार गरेर,
सम्झनाजस्तो बग्न थाल्यो।

🌱 पहिलो बिरुवा उम्रियो —
थपथपायो माटोको छाती,
जन्मियो जीवनको पहिलो हरियाली।
त्यै बिरुवाबाट
फूल फुल्यो —

रङ्गले बोल्यो,
सुगन्धले प्रार्थना गर्‍यो।

🕊 पहिलो चराले गीत गाइदियो —
हावासँगै लहरियो स्वर,
“हामी यहाँ छौं!” भनी
प्रकृतिले पहिलो संगीत बजायो।

☀ पहिलो सूर्यले बिहान ल्याइदियो —
पहिलो उज्यालोको ढोका खुल्यो,
अन्धकार पछि
पहिलो आँखा झुल्कियो।

हेऽऽ… सुन्नू! हेऽऽ… बुझ्नू!
त्यो नै हो,
प्रकृतिको पहिलो नृत्य,
जहाँ माटो, पानी, हावा, र प्रकाश
एकैछिनमा नाचे,
एकैपल्ट बोले,
र सृष्टिले लय थाल्यो।

## (६) मुन्धुमको पहिलो स्वर

हेऽऽ... हेर्नू! हेऽऽ... सुन्नू!
त्यो समयको कुरा हो —
जब हावा सुसाइरहेको थियो,
जुन समय
सूर्य पहिलोपल्ट
अस्तित्वमा आएको थियो।

त्यो बेला...
एक स्वर आयो!
न भाकामा, न शब्दमा —
तर मुर्मुरिँदो कम्पनमा,
स्पन्दनको गर्जनमा।

त्यो नै थियो — पहिलो मन्त्र!
पहिलो लय!
पहिलो मुन्धुमको आवाज!

"हे आकाश – खुल!"
"हे माटो – उठ!"
"हे पानी – बग!"
"हे हावा – चल!"
"हे अग्नि – बल!"
"हे जीवन – बोल!"
"हे सृष्टि – चम्क!"

"हे सत्य – गुञ्ज!"

त्यही स्पन्दन...
त्यही आवाहन...
बन्यो पहिलो मुन्धुम।

शब्द बन्यो स्वर,
स्वर बन्यो मन्त्र,
मन्त्र बन्यो लय,
र लय बन्यो सृष्टिको चक्र।

त्यो नै हो —
मुन्धुम[९]को पहिलो अध्याय!
शब्द, तत्त्व, र ऊर्जा
एकैछिनमा
एकै श्वासमा
पूर्ण बनेका थिए।

---

[9] मुन्धुम, किरात समुदाय— विशेषगरी लिम्बू, राई, याख्खा र सुनुवारहरूको पुरातन मौखिक धर्मग्रन्थ, सांस्कृतिक दर्शन र आध्यात्मिक मार्गदर्शन हो। यसमा सृष्टिकथा, नैतिक मूल्य, कर्मकाण्ड, प्रकृति र पुर्खाको ज्ञान समेटिएको हुन्छ, जुन फेदाङ्बा, साम्बा, येबाहरूद्वारा पुस्तौंदेखि सुनाइँदै आएको हो। संक्षेपमा, मुन्धुम केवल ग्रन्थ होइन— यो जीवित परम्परा हो, जसले आत्मा, समाज र प्रकृतिलाई एकसूत्रमा बाँध्छ।

## (क) तुङ्दुङ्गेको उदय

हेऽऽ... सुन्नू! सुन्नू!
तुङ्दुङ्गे उठ्यो —
निद्रामा लुकेको जिउ हल्लियो,
सपनाको ओछ्यानबाट ओर्लेर
घामको पहेंलो बास्नासँगै
पहिलो पाइला टेकेको दिन।

हेऽऽ... जाग! जाग!
कसको बोलावट थियो त्यो?
कसको ढोका खुल्दै थियो मनभित्र?
पारि डाँडाको छेउमा,
एक निलो डाँफे गुञ्जिँदै थियो,
रुखको फेदमा लुकाइएका कथा
फेरि बज्न थाले तुङ्दुङ्गेको हृदयमा।

"तपाईं को?" — तुङ्दुङ्गेले सोध्यो,
"के तपाईं नै हुनुहुन्छ
जसले मलाई बोलाउनु भयो?"
हावा हाँस्यो,
बादल मुस्कायो,
पातपात बज्न थाल्यो –
"हामी साक्षी हौँ,
हामी तिम्रो मार्ग हौँ,
हामी तिमीभित्रको सम्झना हौँ।"

हेऽऽ... हेर! हेऽऽ... सुन!
त्यो दिन तुङ्दुङ्गेले
आफ्नै छायाँसँग कुरा गऱ्यो,
आफ्नै भयमिश्रित मुहार हेऱ्यो,
र उही क्षण,
उ आफ्नै यात्रा बन्यो।

तुङ्दुङ्गे हिँड्यो —
न छाता, न जुत्ता,
सिर्जनाको जिउँदो उज्यालो बोकेर,
कुनै पुरानो गीत सम्झेर,
आगोका बिँड पार गर्दै
त्यो सृष्टिको गोप्य बाटोमा।
हेऽऽ... सुन्नू! हेऽऽ... हेर्नू!
सृष्टिको छाती खोलेर
जीवनको नयाँ ढुकढुकी सुरु भयो।

धरतीको काखले बीऊ रोप्यो —
न्यानो माटोले लुकाइराखेको सपना,
त्यहीँबाट उम्रिए तुङ्दुङ्गे —
जुनकिरीको उज्यालो जस्तै।

नदीको गर्भबाट स्वर उत्रियो —
गहिरो गुन्गुनाहट,
पुरानो मन्त्र झैँ,
पहिलो स्वासको संगीत।

निलो आकाश खुल्यो —
टाढा... अझ टाढा...
बोलायो तुङ्दुङ्गेलाई,
चन्द्रको चमक समाएर
उनी उठे —
शून्यलाई टेकेर उभिए।

नदीमा बगे तुङ्दुङ्गे —
पानीसँगै गीत बगाउँदै,
जङ्गलमा बढे तुङ्दुङ्गे —
रुखसँग सल्लाह गर्दै।
पहाडको चुली चढे —

उसले आत्मसात् गर्‍यो—
धरतीबाट अडान,
हावाबाट श्वास,
पानीबाट बग्ने चाल,
आगोबाट ताप र रूपान्तरण,
आकाशबाट विस्तार र असीमता।

जीवनको सत्य बुझ्दै,
तुङ्दुङ्गे अघि बढ्यो—
पिठ्युँमा मुन्धुम बोकेर,
हृदयभित्र यात्रा प्रज्वलित गर्दै।

## (ख) तुङ्दुङ्गे र प्रकृतिको संवाद

हेऽऽ... सुन! हेऽऽ... हेर!
तुङ्दुङ्गे उभिए,
पहाडको शिखरमा,
शून्यको छेउमा,
र सोधे —
सृष्टिका आधारहरूसँग,
उत्तर खोजे।

“हे आकाश...
के म तिमीभित्र हराउन सक्छु?
तिमीझैँ फैलिन र
शून्यझैँ अडिग रहन सक्छु?"

“हे माटो...
के म तिमीमा बिलिन हुन वा
तिमीझैँ जीवनको गर्भ बन्न सक्छु?"

“हे हावा...
के तिमी मलाई बोक्छौ?
श्वास झैँ सँगै बग्छौ?"

“हे आगो...
के तिमी मलाई जलाउँछौ?
मभित्र प्रकाश छर्न सक्छौ?"

“हे पानी...
के तिमी मेरो मन बगाउन सक्छौ?
मेरो गीत बोकेर बग्न सक्छौ?"

त्यो बेला — सारा प्रकृति बोले,
बोले अडिग स्वरमा,
बोले मौनता चिरेर:

🌍 माटोले भन्यो —
“तिमी मेरै काखको बीऊ हौ,
तिमी सन्तान हौ!”

💧 पानीले भन्यो —
“तिमी मेरो बगिरहेको स्वर हौ,
तिमी प्रवाह हौ!”

🌬 हावाले भन्यो —
“तिमी मलाई छुन नसके पनि तिमी चाल हौ,
तिमी गति हौ!”

🔥 आगोले भन्यो —
“तिमी मेरो राप,
तिमी मेरै ज्वाला हौ!”

☁ आकाशले भन्यो —
“तिमी मभित्र अटाएको चेतना हौ,
तिमी अनन्त हौ!”

हेऽऽ... बुझ! हेऽऽ... महसुस गर!
तुङ्दुङ्गेले इसारा बुझे,
सारा प्रश्न स्वयम्
उत्तर बनिसकेका थिए।

## (ग) तुङदुङ्गेको जीवन यात्रा

जुन बेला,
जब आकाश खुलिरहेको थियो,
धरती स्वास फेरिरहेकी थिइन् —
त्यही बेला जन्मिए
तुङदुङ्गे!

ज्ञानको दीप बोकेर आए,
शान्तिको स्पर्श लिई आए।
निदाएको धर्तीले आँखा खोल्यो,
नदीहरू मुस्काए।

सृष्टिको नियममा टेके —
हर पाइलामा अर्थ खोजे।
भाग्य कहिल्यै टाढा भएन,
छायाँ झैँ पछ्याइरह्यो।

हुर्किए तुङदुङ्गे,
हिँडे पाइला–चाल्दै —
पवित्र सत्यको खोजमा।

हावासँग गाए गीत,
पंक्षीसँग उडे आकाशमा,
नदीको स्वरले बाटो देखायो।

जङ्गलको जिउँदो मुटुमा
भेटिए साम्बा गुरु —
काठको चौतारोमा वाचन भइरहेथ्यो
प्राचीन मुन्धुम।

तुङ्दुङ्गेले सुनिरहे,
शब्द–शब्दमा आत्मा थिर–थिर भयो।
सिके उनले—
जीवनको चाल,
सृष्टिको रहस्य,
मौनताको भाषा।

अग्निको शक्ति बुझे —
जलको चाल महसुस गरे।
बादलको गर्जन सुने—
सूर्यको रक्त-लाली भित्र आत्मा देखें।

शब्दमा शक्ति थियो,
ध्वनिमा ज्ञान थियो —
तुङ्दुङ्गे स्वयम्
सिद्ध बने,
महान बने।

## (घ) तुङ्दुङ्केको यात्रा र ज्ञान

हेर... सुन... महसुस गर!
जीवन बोल्छ — नदीको लयमा,
चुपचाप बग्छ — तीर नछोई,
त्यो नै यात्रा हो — त्यो नै ज्ञान।

हेर!
पहाडको मुटुमा सत्य लुकेको छ,
हावाले कुरा गर्छ,
पानीले गीत गाउने गर्छ,
अग्निले देखाउँछ अनुहार,
आकाशले खोल्छ ढोका।

यात्रा सुरु — जन्म र खोज
माटोको काखमा उम्रिए तुङ्दुङ्के —
पवित्र ढुकढुकी जस्तै,
धरतीको गर्भबाट आएको छाया।

पहाडको अँगालोमा सुत्केरी जस्तो समय —
र नदीको लयमा
उनको पहिलो स्वास मिसिएको थियो।

सूर्यको किरणले तातो बनायो —
चन्द्रको चिसोले अँगाले।
पहिलो बास्ना — पातको न्यानोपन।
पहिलो संगीत — खोलाको बग्दो स्वर।

पहिलो पाठ उनले तारा हेर्दै सिके,
निलो आकाशको मौनतासँग।
गहिराइ बुझ्न — आँखा बन्द गरे।
प्रश्न उठे —
"म को हुँ?"
"म किन आएको?"

शिखर चढे —
अग्लो भएर होइन,
गहिराइ बुझ्न।

खोल्सामा ओर्ले —
झर्नासँगै बग्न।

जङ्गलका पातहरूसँग कुरा गरे —
हावाका स्पर्शसँग अनुभूति गरे।

हेऽऽ...
तुङ्दुङ्गे हिँड्दै थिए —
बाहिर जस्तो देखिए पनि,
भित्रको यात्रा चलेको थियो।

## (ङ) पृथ्वीको सन्देश: जरा र विश्वास

हेऽऽ... सुन्नू त! हेऽऽ... बुझ्नू त!
पहिलो दिन,
तुङ्दुङ्गेले टेके धरतीको छातीमा,
र सोधे–
“हे माटो... के म तिमीबाट आएको हुँ?”

धरती हाँसिन् —
पातहरू हल्लिए,
रुखका जराहरू बोल्न थाले —
मौनता चिरेर।

"हे तुङ्दुङ्गे..."

"तिमी मेरो गर्भको बीऊ हौ,
तर तिमी केवल माटो होइनौ!"

"हेर न — मेरो काखमा
पहाडहरू अडिएका छन्,
जुन स्थिर छन्, अटल छन्,
तर तिनको अडान
भित्र गाडिएको जरामा हो।"

"सत्य खोज्न हतार नगर्नू,
घडी हेरेर यात्रा नगर्नू।
जरा जस्तै बग्नू —

भित्र, गहिरो, मौन भएर।"

त्यो सुनेपछि,
तुङ्दुङ्गे झुके —
माटो छोए —
धेरै बोलेनन्,
तर धेरै कुरा बुझे।

उनको नजर पुग्यो
सुन्तला रङ्गको सूर्यमा —
जहाँ प्रकाश मौन थियो।

त्यही दिन,
जीवनको पहिलो पाठ सिके —

"विश्वास —
जरा जस्तै हुनुपर्छ।
धरती समाइरहने,
गहिराइमा टिकिरहने।"

## (च) हावाको पाठ: गति र स्वच्छन्दता

हेऽऽ... सुन त! हेऽऽ... महसुस गर!
त्यो बिहान,
हावाले जिस्क्यायो —
तुङ्दुङ्गेको कपाल फर्फरायो,
तर हावा कहिँ देखिएन।

हावा हाँस्यो —
नदेखिने भेषमा।
बोल्यो —
“हे तुङ्दुङ्गे...
म छु तर छुँदिन,
म अदृश्य हुँ, तर महसुस हुन्छु।”

“म रोकिन्न, म बाँधिन्न,
म त स्वतन्त्र लय हुँ!
किन तिमी सधैं सीमामा अड्किन्छौ?
किन स्थिरताको मोह गर्छौ?"

तुङ्दुङ्गेले हात फैलाए —
हावासँगै आफ्नै शरीर उडाए।
उनका पाइला दौडिए
नदीका किनारमा —
जहाँ पानी बोल्दछ
तर शब्द बिना।

रुखका पातहरूमा हात पुऱ्याए —
छुने होइन, महसुस गर्ने।
हावाको लहरसँग गाए —
आफ्नो डरहरू त्यहीँ छाडे।

त्यो दिन तुङदुङ्गेले बुझे —
“जीवन स्थिर मात्र होइन,
गति पनि हो।
चल्ने होइन, बग्ने।
स्वासजस्तै स्वतन्त्र —
हावाजस्तै अदृश्य।”

## (छ) आगोको शिक्षा: साहस र तेज

हेऽऽ... हेर्नू! हेऽऽ... बुझ्नू!
त्यो साँझ,
पहिलो चोटि तुङ्दुङ्गेले देखे
रातो ज्वाला —
नाचिरहेको ज्योति,
बोल्न खोजिरहेको उज्यालो।

डराए तुङ्दुङ्गे —
पछाडि सरे,
पाखा समातेर हेरे।

तर...
अग्निले बोल्यो —
मौनता चिर्दै, बलेको स्वरमा।

“किन डराउँछौ, तुङ्दुङ्गे?”
“म हुँ नाश —
तर म हुँ प्रकाश पनि।”

“म ज्वाला हुँ —
तर म न्यानोपन पनि हुँ।”

“म जलाउँछु —
तर म उज्यालो पनि दिन्छु।”

झसङ्ग भए तुङ्दुङ्गे —
जसरी रुखमा चरो ब्यूँझिन्छ।
आगो नजिकिए,
हात अघि बढाए —
जलाएन,
तर बले।

तापले आत्मा काँप्यो,
तर डर हरायो।
भित्रै कतै —
शक्ति झल्कियो, तेज बल्यो।

त्यो दिन, तुङ्दुङ्गेले बुझे —
"साहस बिना सत्य पुगिन्न।"
"जो आगोलाई सम्हाल्न सक्छ,
त्यसले उज्यालो देख्न सक्छ।"

## (ज) जलको शान्ति: प्रवाह र स्वच्छता

हेऽऽ... सुन! हेऽऽ... महसुस गर!
नदी बगिरहेकी थिइन् —
बगिरहेकी... झरनाजस्तै,
शिला चिर्दै, बाटो खोज्दै।

तुङ्दुङ्गे झुके —
नदीको छेउमा।
हात चिसो पानीमा डुबाए,
स्वास लिए, र सोधे —

"हे नदी...
तिमी किन कहिल्यै अडिन्नौ?"

पानी हास्यो —
झरनाको हाँसोमा।
र बोल्यो —

"किनकि म अडिन सक्दिन!
म रोकेँ भने — म गन्हाउन थाल्छु।
म बगिरहे — म शुद्ध रहन्छु।
बगिरहे — म जीवन दिन्छु।"

त्यो दिन तुङ्दुङ्गेले बुझे —

"मन पनि नदीजस्तै हुनुपर्छ —
प्रवाहमै शुद्धता हुन्छ,
रोकिएमा सडिन्छ।"

"जो बगिरहन्छ — ऊ जिउँदो हुन्छ।"
"जो थामिएर बाँच्छ — ऊ मात्र हुन्छ,
तर बाँच्दैन।"

## (झ) आकाशको शुन्यता: अनन्तता र स्वीकार

हेऽऽ... हेर! हेऽऽ... सुन!
तुङ्दुङ्गे टाउको उठाएर
निलो आकाश देखे र टोलाए।
चुपचाप —
उनका शब्द मौन थिए,
तर मनमा स्पन्दन चलेको थियो।

त्यहाँ कुनै आकृति थिएन,
कुनै सीमाना थिएन —
तर त्यो खालिपनमै अर्थ थियो।

तुङ्दुङ्गेले सोधे —
"हे आकाश...
तिमी किन यति खालि छौ?"

त्यो बेला, आकाश बोल्यो —
शून्यताको आवाजमा,
अदृश्य कम्पनमा।

"म खालि छु —
किनभने म सबै समेट्न सक्छु।"
"म आफै केही होइन —
तर मभित्र सबै देख्न सकिन्छ।"

त्यो दिन, तुङ्दुङ्गेले बुझ्ने —

“मन पनि आकाशजस्तै हुनुपर्छ —
स्वच्छ, खुला, असीमित।”
न बाँधिने, न रोकिने,
तर सबैलाई अँगाल्ने।

हेऽऽ… बुझ्नू! हेऽऽ… महसुस गर्नू!
शून्य नै अन्ततः
सबै सम्भावनाको गर्भ हो।

## (ञ) पञ्चतत्त्वसँगको संवाद – आत्मबोधको उज्यालो

हेऽऽ... सुन! हेऽऽ... हेर!
तुङ्दुङ्गे उभिए
सृष्टिको घुम्तीमा —
जहाँ पाँचै तत्व
जस्तै पाँच दिशाले बोल्न थाले।

🌍 माटोले भन्यो —
“हे तुङ्दुङ्गे,
जरा जस्तै अडिन सिक,
आफ्नो मूल नबिर्स।”

💨 हावाले भन्यो —
“बग — तर बाँधिनु हुन्न,
स्वतन्त्रता नै साँचो गति हो।”

🔥 आगोले भन्यो —
“जल्नू — तर अन्धाधुन्द हैन,
साहसको रेखा भित्र उज्यालो गर।”

💧 पानीले भन्यो —
“बग्नू — तर शुद्धतामा बग,
प्रवाहमै जीवनको स्पर्श छ।”

☁ आकाशले भन्यो —
“खुल — तर थाम्न नखोज,
स्वीकार नै अनन्तता हो।”

त्यो क्षण —
तुङ्दुङ्गे झसङ्ग भए।
भित्र एक उज्यालो बल्यो —
र उनले बुझे —

जीवन केवल जन्म र मृत्यु होइन,
जीवन आत्माबोधको यात्रा हो।

उनी मुस्कुराए —
जङ्गलका पातहरू चलमलाए,
नदीले संगीत बजायो,
आकाशले उज्यालो छर्‍यो।

सृष्टि फेरि हिँड्न थाली,
र जीवन फेरि
सत्यको लयमा गुञ्जियो।

## (क) तुङदुङ्गे र अन्धकारको युद्ध

आगोले धर्मलाई शुद्ध बनाउँछ,
नदीले कानुनलाई परिष्कृत गर्छ,
रुखहरूले परम्परालाई बोकेर उभिन्छन्।
तर जब आँधी चल्छ,
को बाँच्न सक्छ?

आगो बिना प्रकाश छैन,
अन्धकार बिना राग छैन।
संघर्ष बिना शान्ति छैन,
र महायुद्ध बिना विजय छैन!

तर हेऽऽ... हेर्नू त!
अन्धकार उठ्न थाल्यो —
पर्वत फाट्यो,
र दैत्य झर्‍यो — कालो तुफान झैँ।

भूइँ काँप्यो,
नदी रगत बनी बग्यो।
निशाचरहरू आए —
खप्पर पिट्दै, गर्जना गर्दै।

तर तुङदुङ्गे अडिग भए —
धरतीको बीचमा,
न्यायको पक्षमा, सत्यको बलमा।

उनी लडे —
तर क्रोधले होइन, बुद्धिले।
घृणाले होइन, प्रेमले।
भयले होइन, विश्वासले।

रुखहरू रोए —
हावाले पीडा गुनगुनायो।
नदी बोले —
"जोगाऊ, जोगाऊ यो सृष्टि!"

त्यो क्षण —
शक्ति मात्रै होइन,
ज्ञान नै ठूलो देखियो।

महायुद्ध सन्तुलनमा पुग्यो —
विनाशमा होइन,
समझदारीमा।

हेऽऽ... बुझ! हेऽऽ... स्मरण गर!
सत्य कहिल्यै हार्दैन —
प्रेमले उसको साथ दिन्छ।
र सृष्टि कहिल्यै मर्दैन —
अवश्य सन्तुलन फर्किन्छ।

## (ख) युगहरूको टकराव: प्रारम्भको गर्जन

त्यो दिन —
पहाडहरू जुरुक्क उठे,
झनझनाउँदै —
धर्तीकै हड्डी झैँ कठोर।

नदीहरू बौलाए —
झरनाहरू चिच्याए,
किनारहरू च्यातिए।

पातहरू सुसाए —
रुखहरूले थरथर काँपे।

हावा —
उराठिलो र अन्तहीन —
आर्तनाद गर्दै दौडियो।

युगहरूको सिमानामा —
एक शङ्ख बज्यो!
गर्जन भयो —
शब्द बिना बोल्ने स्वर!

त्यो आवाजले —
प्रकृतिको क्यानभासमा
युद्धको रेखा कोर्‍यो।

एकातिर थियो —
सृष्टिको उज्यालो,
सत्य, धर्म,
बिहानको प्रकाश,
तलदेखि टेको लिएको विश्वास।

अर्कोतिर थियो —
विनाशको अन्धकार,
मोह, अधर्म,
आँखा टाल्ने लोभ,
जसले जग हल्लाउँछ।

तर हेऽऽ... सुन!
सत्य र असत्यको दूरी —
दुनियाँले हेरे जस्तो थिएन।
त्यो दूरी विचारको थियो,
शक्तिको होइन।

शक्ति त —
दुवै पक्षसँग बराबरी थियो,
तर भिन्न थिए सोच, बाटो र भावना।

## (ग) पृथ्वीका आँसु: युद्धको पूर्वसंकेत

पृथ्वी रून थालिन् —
नयन बिना, आँसु बिना —
तर उसको छाती चिरिएको थियो।

पहाडका टाकुरा झरे —
ढुङ्गाहरू अडिन सकेनन्।
रुखहरू ढले —
बिना आँधी, बिना बाढी।

नदीहरू —
उल्टो बग्न थाले,
प्रवाह रोकियो, समुद्र काँप्यो।

त्यही बेला, पृथ्वी बोलिन् —
भित्रैको गर्जनमा, चुपचाप स्वरमा —

"हे तुङ्दुङ्गे!
यो युद्ध तेरो कर्म हो,
यो युद्ध तेरो धर्म हो।"

"भाग्ने होइन —
बुझ्ने प्रयास गर।
नाश होइन,
सन्तुलन खोज यात्रा हो यो।"

तुङ्दुङ्गेले टोलाए आकाशतिर —
जहाँ चन्द्र र सूर्य
एक–अर्कासँग टकराइरहेथ्यो।
तारा ओझेलमा थिए,
सन्तुलन चिप्लिरहेको थियो।

त्यो बेला, तुङ्दुङ्गेले बुझे —

“संघर्ष बिना सत्य जन्मिँदैन,
महायुद्ध बिना शान्ति टिक्दैन।”

र उनले त्यो सत्यलाई
आत्मासँग गासे —
स्वाससँग गाँसे —
पृथ्वीका आँसुहरू पुछदै,
उनी युद्धतर्फ हिँडे —
तर हिंसामा होइन,
धर्मको स्वरमा।

## (घ) आत्माको द्वन्द्वः रक्तको नदी

हेऽऽ...
पहिलो युद्ध बाहिर थियो —
तर दोस्रो युद्ध...
भित्र थियो — आत्माको घाटमा।

तुङ्दुङ्गे चुप लागे,
शस्त्र बोकेको हात थरथरायो।
मनले सोध्यो —
“के म साँच्चै यो युद्ध जित्न चाहन्छु?”

तर उत्तर...
उत्तर बाहिर थिएन —
भित्रैबाट आएको थियो —
शून्यजस्तै स्पष्ट, मौनजस्तै गहिरो —

“यो युद्ध जित्ने होइन —
यो युद्ध भोग्ने हो।”
“यो युद्ध सम्झिने हो।”
“यो युद्धभित्र जल्ने हो।”

त्यही बेला —
रगत बग्यो।
घाउले होइन —
निर्णयले।

रगतले नदी बन्यो,
र नदीले माटो रातो बनायो।

आकाश रोयो,
रुखहरू मौन भए।
सृष्टिले हेर्दै भन्यो —
“धर्मका लागि लड्नेहरू पनि
आखिर रक्तमै नुहाउँछन्।”

हेऽऽ... बुझ! हेऽऽ... महसुस गर!
धर्मको बाटो
सधैं उज्यालो हुँदैन,
कहिलेकाहीँ त्यो
रक्तको नदी पार गरेर जानुपर्छ।

## (ङ) आगो र खरानी: पुनर्जन्मको पीडा

हेऽऽ...
महायुद्ध सकियो —
शङ्ख रोकियो,
तर पृथ्वी जलेर खरानी बन्यो।

रुखहरू नाङ्गा भए,
नदीहरू सुके —
पहाडहरू मौन भए।
आकाश धुवाँले ढाकिएको थियो।

त्यही बेला —
सृष्टिले तुङदुङ्गेलाई सोध्यो —

"हे तुङदुङ्गे,
अब के गर्छौं?"

तुङदुङ्गे झुके —
धरतीको छातीबाट
एक मुठ्ठी खरानी उठाए।

उनको स्वर भित्रैबाट आयो —
शान्त, तर प्रबल —

"यो खरानी पराजय होइन।

यो खरानी पुनर्जन्मको संकेत हो।”

“जहाँ आगो सकिन्छ,
त्यहीँ नयाँ बीऊ राखिन्छ।”
“जहाँ धुवाँ हुन्छ,
त्यहीँबाट सूर्य फेरि उदाउँछ।”

हेऽऽ... सुन! हेऽऽ... बुझ!
पहाड फेरि हरिया हुनेछन्,
नदी फेरि बग्नेछ।
तर यो खरानी —
कहिल्यै बिर्सिनु हुन्न।

इतिहासले यो कथा बोलेकै हुनेछ —
महायुद्धको होइन,
पुनर्जन्मको।

## (च) विजय वा हार? अन्तिम सत्य

युद्ध सकियो —
धूलो बस्यो, खरानी थामियो।

तुङ्दुङ्गे मुस्कुराए —
उनी न राजा बने, न विजेता।
किनभने उनले
जित खोजेका थिएनन् —
उनी त सत्य खोज्दै हिँडेका थिए।

त्यसैले उनले भने —

“विजय? त्यो त क्षणिक हुन्छ।
साँचो जीत —
आत्माको शान्ति हो।”

त्यही दिन —
सूर्य पहिलो पटक रातो देखियो,
न रगतका कारण,
न आगोका कारण —
तर सत्यको उज्यालोले
आकाश नै रङ्गिएको थियो।

हेऽऽ... जान! हेऽऽ... मनन् गर!
संघर्ष र महायुद्ध —
जीवनका अङ्ग हुन्।
तर सबै युद्ध

शस्त्रबाट जितिँदैन।

केही लडाइँ —
बाहिरको संसारमा हुन्छन्।
तर सबैभन्दा गहिरो युद्ध —
आफ्नै भित्र लडिन्छ।

तुङ्दुङ्गेको यात्रा
शक्तिको यात्रा थिएन —
सत्य र ज्ञानको यात्रा थियो।
जहाँ
शस्त्र होइन,
सञ्जीवनी हो —
शब्द होइन,
बोध हो।

र अन्ततः —
जित त्यो हो
जहाँ आफू आफूसँग मेल खान्छ।

## (क) सृष्टि–धर्मको पहिलो स्पन्दन

हे सुन—
पहिलो उज्यालो
सूर्यको घाम होइन,
ज्ञानको स्पन्दन थियो।

पहिलो पत्थर,
सिर्जनाको चाल भयो।
पहिलो हावा,
स्वासको मन्त्र भयो।
पहिलो पानी,
शपथको स्वर भयो।

हे तुङदुङ्गे लासे[10]!
जब मानिसले
पहिलो पापको छायाँ छायो,
त्यतिखेर—
धर्मको बीउ उम्रियो।

धर्म— नियम होइन।
धर्म—मनको फेद हो।
धर्म—ज्योति हो

---

[10] “लासे” भन्नाले कुनै गौरवशाली व्यक्तित्व, नेतृत्व क्षमता भएका व्यक्ति, वा पवित्र कार्यमा समर्पित पात्र जनाउँछ। धेरैजसो लिम्बू गीत, काव्य, र कथनहरूमा "लासे" शब्द साहसी, वीर, अथवा दिव्य प्रेरणादायी व्यक्तिका रूपमा प्रयोग गरिन्छ।

भित्रबाट बाहिर फर्कने।

तर हेर!
कसैले धर्मलाई
केवल कर्ममा बाँध्यो,
कसैले धर्मलाई
खालि शब्दको पर्खाल बनायो।

धर्म शब्द बन्यो,
कर्म हरायो।
धर्मको बोली बाँकी रह्यो,
तर उसको चाल
धेरै अघि हराइसकेको थियो।।

## (ख) कानुनको आत्मा

हे तुङ्दुङ्गे सुनाऊ!
पहिलो चोट परेको थियो—
अन्यायको काँडोले।
त्यही दिन,
एक सन्तुलन जाग्यो—
कानुन भनेर चिनियो।

नदी गम्भीर बन्यो—
र गर्‍यो उद्घोष:
"जो सत्यबाट टाढा जान्छ,
म उसलाई बहाइदिन्छु।"

पहाड साक्षी बनेर उभियो—
र भन्यो शपथले:
"जो असत्यको बोझ बोकेर आउँछ,
म तीमाथि चट्याङ बनेर खस्नेछु।"

तर मानिस काँप्यो।
उसले प्रश्न सोध्यो—
"हे आत्मा! कानुन शक्ति हो?"
अनि—
पहाड–नदी–आकाश बोले एकै स्वरमा:
"कानुन शक्ति होइन,
कानुन त सन्तुलन हो।"

तर हे!
मानिसले कानुनलाई
हतियार बनायो।
तराजु त बाँकी रह्यो,
तर न्याय त्यहाँ थिएन।

तराजुमा उसले राख्यो—
सत्ता।
र भन्यो— "यो न्याय हो।"

तर त्यहाँ
नदी रोइरहेको थियो,
पहाड मौन थियो।

## (ग) परम्पराको जरा

हे तुङ्दुङ्गे सुन!
जुन जरा
रुखको मुनि गाडिन्छ,
त्यसै गरी
परम्परा गाडिएको थियो—
धरतीको छातीभित्र।

साथमा थिए:
पुराना स्वरहरू—
जसले मन्त्र जप्थे।
पुराना चालहरू—
जसले पाइलाको अर्थ बुझ्थे।
पुराना वाचा—
जसले गगनमा गुँञ्जाउँथे।

तर हे!
समय त नदी थियो—
जहाँ एउटै पानी
कहिल्यै दोहोरिएर बग्दैन।

त्यसपछि मानिस आयो।
उसले भन्यो—
"परम्परा बचाउनु धर्म हो!"

तर तुङ्दुङ्गे बोल्यो—
"बचाउनु मात्र होइन,
आत्मा दिने हो!
नयाँ अर्थ दिने हो!
नत्र परम्परा
काठको मूर्ति मात्र बन्छ।"

तर परम्पराले सुनिनन्—
परिवर्तनको भाषा।
उनले टेरिनन्—
समयको चाल।

अनि कानुन आयो—
उसले धर्मलाई बाँध्न खोज्यो,
परम्पराको हाँकमा,
शक्तिको श्रृंखलामा।

तर धर्म—
न त केवल स्मृति हो,
न त केवल विधि।
धर्म त आत्माको यात्रा हो—
नदी जस्तै बग्ने।
र जरा जस्तै
धरतीसँग संवाद गर्ने।

## (घ) तीन छायाहरूको द्वन्द्व

(धर्म, कानुन, र परम्पराको द्वन्द्व)

हे सुन्नू त!
सृष्टिको थाम –
तीन ओटा खम्बा थिए—
धर्म थियो,
कानुन थियो,
परम्परा थियो।

तर जब ती तीनै
एक-अर्कासँग ठोक्किए—
धरती थरथर काँप्यो,
पहाड मौन भयो,
र नदी उल्टो बग्न थाल्यो।

धर्म करायो—
"म सत्यको तेज हुँ!"
कानुन गर्जियो—
"म न्यायको तराजु हुँ!"
परम्परा गुञ्जियो—
"म समयको साक्षी हुँ!"

तर—
तुङ्दुङ्गे हाँस्यो।
र उसले भन्यो:

"हे मूर्ख आत्माहरू!
सत्य बिना प्रेम,
शुष्क हुन्छ।
न्याय बिना विवेक,
क्रूर हुन्छ।
समय बिना परिवर्तन,
जङ्गल बन्छ।"

उसले फेरि भन्यो—
"धर्म,
केवल सत्य होइन,
त्यो प्रेम हो—
जसले आँसु पुच्छ।

कानुन,
केवल न्याय होइन,
त्यो विवेक हो—
जसले कठोरता भुलाउँछ।

परम्परा,
केवल समय होइन,
त्यो परिवर्तन हो—
जसले नयाँ बीउ रोप्छ।"

तर मानिसले...
त्यो बोली नसुने झैँ गऱ्यो।
उसले धर्मलाई—

शिला बनायो,
कानुनलाई—
तरवार बनायो,
परम्परालाई—
श्रृङ्खला बनायो।

र त्यसपछि,
तीन छायाहरूले—
मानवताको बाटो छेक्न थाले।
तर तुङदुङ्गे,
फेरि लट्ठी उठाउँदै हिँड्यो—
धर्म, कानुन, परम्परालाई
सन्तुलनमा फर्काउने गीत गाउँदै।

## (ङ) अन्तिम प्रश्न: सत्य के हो?

(तुङ्दुङ्गेको मौन संवादमा)

हे सुन—
एक दिन,
तुङ्दुङ्गे
शुन्य भित्र पस्यो।
हावालाई रोकेको थियो,
सासलाई छोडेको थियो,
र आत्मासँग सोधेको थियो:

"यदि धर्म
मनको स्पन्दनबाट हरायो भने?
यदि कानुन
अन्यायको साँचो बन्यो भने?
यदि परम्परा
समयसँग हिँड्न मानेन भने?"

त्यो प्रश्न
अकाशमा टाँगिएको थियो,
तर उत्तर—
धर्तीको गहिराइबाट आयो।

आवाज आयो—
"त्यसपछि धर्म
जङ्गलभित्र बन्दी हुनेछ।

कानुन
डरको साँङ्लो हुनेछ।
परम्परा
माटोमुनि थुनिनेछ,
बीउजस्तै,
तर सुक्खा।"

त्यसैले—
तुङ्दुङ्गे उठ्यो।
उसले मन्त्रको सन्देश बोकेको थियो,
नदीको आवाज बोकेको थियो,
र गगनको उज्यालो बोकेको थियो।

उसले धर्मलाई—
मनको आकाशमा उडायो।
उसले कानुनलाई—
प्रेमको आगोमा ताप्यो।
उसले परम्परालाई—
बिउ बनायो,
र नयाँ माटोमा रोप्यो।

त्यो दिन—
सूर्य पहिलो पटक
सुनौलो देखिएको थियो,
र मानिसले
पहिलो पटक प्रकाश
भित्रैबाट महसुस गरेको थियो।

## (च) तुङ्दुङ्गेले पढाएका पाठ

(धर्म, कानुन, परम्परा र सत्यको सन्तुलन– मुन्धुमको स्वरमा)

हे सुन, हे मन—
धर्म,
केवल नियम होइन।
धर्म—
मनको ज्योति हो,
जसले अन्धकार चिर्छ।

कानुन,
केवल डर होइन।
कानुन—
न्यायको संगीत हो,
जसले हृदयका तारहरू कम्पायमान बनाउँछ।

परम्परा,
केवल जंजीर होइन।
परम्परा—
परिवर्तनको पुल हो,
जसले समयका किनारालाई जोड्छ।

यही थियो तुङदुङ्गेको दृष्टि—
"जब धर्म, कानुन, र परम्परा
सन्तुलनमा उभिन्छन्,
त्यतिबेला मात्र

सृष्टि सुन्दर हुन्छ।
त्यतिबेला मात्र
आत्मा हलुका हुन्छ।"

उनले भने—
"प्रकृति बचाऊ,
सत्य बाँच,
जीवनको मूल्यमाथि
कहिल्यै ननाच।"

त्यही पाठ उनले पढाए,
शान्तिको सूत्र सुनाए,
प्रेमको मन्त्र फुकाए।

उनले पर्वहरू बाँधे,
नियमहरू लेखे,
पवित्र सांस्कृतिक गीतहरू
मुक्त गगनमा उडाए।

त्यसपछि—
साम्बा बने,
येबा बने,
फेदाङ्बा बने,
मुन्धुमका संरक्षक बने।

सम्बन्धको सत्य,
समाजको न्याय,

सन्तुलनको बाटो
उनले खोले।

त्यो बाटो सन्तानले हिँडून्,
कहिल्यै नबिर्सून्—
मुन्धुम बाँचोस्,
र हाम्रो चिनारी बनोस्।
हे तुङदुङ्गे! हाम्रो आत्माको गाथा तिमी हौ।

## (क) आत्मबोधको घडी: तुङदुङ्गे र अन्तिम उज्यालो

(अन्तिम रहस्यको उद्घाटन)

हे सुन, हे हावाका कान!
तुङदुङ्गे
धेरै लामो यात्रामा निस्के।
पर्वत पार गरे,
नदीसँग बगे,
आकाशजस्तो मौन भए।

उनले खोजे—
सङ्घर्षको जरा,
प्रेमको गहिराइ,
सत्यको तेज,
र न्यायको तराजु।

सबैलाई छामे,
सबैलाई बुझे।
तर—

जब मृत्युको छायाँ
पखेटा फैलाउँदै आयो,
त्यो क्षणमा मात्रै
तुङदुङ्गेले महसुस गरे—

"मैले धेरै कुरा जानें,
तर पूर्णता अझै टाढा छ।"

त्यो पूर्णता—
शब्दमा अटाउँदैन।
त्यो ज्ञान—
कागजमा लेखिंदैन।
त्यो शिक्षा—
स्वास र मौनताको बीचमा बग्छ।

त्यसैले तुङ्दुङ्गेले
शब्द होइन,
स्पन्दन दिए।
उपदेश होइन,
आत्मा दिए।

अन्तिम घडीमा—
उनको आँखामा
प्रकृतिको सम्पूर्ण कथा चम्कियो,
उनको ओठले
एक हरफ मात्र फुसफुसायो—
"जीवन... सुन्ने कला हो।"

त्यो सुने—
वृक्षले,
नदीले,
हावाले,

र सन्तानले।

त्यस दिनदेखि—
मौन शिक्षा
सबैभन्दा गहिरो मुन्धुम बन्यो।

## (ख) पञ्चतत्वको संवाद: पाँचै तत्वका रहस्य

तुङ्दुङ्गेले पाँच तत्वलाई बोलाए।
सबभन्दा पहिले,
उनले पृथ्वीलाई सोधे—
"के तिमी नै सत्य हौ?"
पृथ्वीले भनिन्—
"म स्थिर छु, म जीवन जन्माउँछु,
तर एक दिन सबैलाई आफैँमा विलीन गर्छु।"

उनले जललाई सोधे—
"के तिमी जीवनको सार हौ?"
जलले भनिन्—
"म प्रवाह हुँ, म निर्मलता हुँ,
तर कहिलेकाहीँ म विनाशको कारक पनि बन्छु।"

उनले अग्निलाई सोधे—
"के तिमी प्रकाश हौ?"
अग्निले भने—
"म ताप हुँ, म ऊर्जा हुँ,
तर म नियन्त्रित भइन भने, सबैलाई भस्म गर्छु।"

उनले वायुलाई सोधे—
"के तिमी नै प्राणशक्ति हौ?"
वायुले भने—
"म जीवनलाई चलाउँछु,

तर कहिलेकाहीँ म आँधी बनेर विनाश मच्चाउँछु।"

अन्त्यमा, उनले आकाशलाई सोधे—
"तिमी किन मौन छौ?"
आकाशले मुस्कुरायो र भन्यो—
"म कुनै सीमा भित्र छैन,
म न त स्थिर छु, न त चलायमान।
म सबैलाई समेट्छु, तर म आफैँ शून्य हुँ।"

तुङ्दुङ्गे स्तब्ध भए।
उनले बुझे—
"पाँच तत्वहरू जीवनका आधार हुन्,
तर आकाश नै अन्तिम सत्य हो।"

## (ग) शून्यतर्फको यात्रा: तुङ्दुङ्गेको आत्मा उडेको क्षण

(मुन्धुमको मौन आरोहण)

हे सुन, हे समयका सन्तान!
त्यसपछि—
तुङ्दुङ्गेले
आफ्ना दुई हात
आकाशतर्फ फैलाए।

उनले आँखाहरू बन्द गरे,
तर दृष्टि खुला थियो।
आकाशले बोलायो,
शून्यले बाटो देखायो।

शरीर–
पृथ्वीमा रह्यो,
जसरी रुखको जराले
धरतीलाई अँगाल्छ।

तर आत्मा–
हावामा घोलियो,
चरा बनेर होइन,
किरण बनेर होइन—
शून्यको स्पन्दन बनेर।

उनको स्मृति—
नदीझैँ बगिरह्यो,
चुपचाप,
तर जीवन बोकेर।

उनको शिक्षा—
अग्निजस्तै प्रज्वलित रह्यो,
शब्दभन्दा पर,
हृदयको उज्यालो बनेर।

तर अस्तित्व?
त्यो त विलीन भयो—
न हरायो,
न मेटियो,
तर शून्यमा
समाहित भयो।

त्यो शून्य—
कसैले बुझ्दैनन्,
तर सबै त्यहीं पुग्न चाहन्छन्।

तुङ्दुङ्गेले अन्ततः देखे—
सत्य शब्दमा थिएन,
सत्य मौनताको स्वरमा थियो।

## (घ) शिक्षा: आकाशको पत्र – तुङ्दुङ्गेको मौनता

त्यो रात—
चन्द्रमा मौन थिइन्,
उनी न बोलिन्, न झरिन्।
तारा टल्किरहेका थिए—
आँखा जस्तै सम्झनामा।

अनि आकाशले लेख्यो—
एक मौन पत्र।

कसैले कलम चलाएन,
कसैले स्वर बोलेन।
तर पत्र आयो—
मनको गहिराइमा टाँसिएर।

"तिमी माटो थियौ—
बिउ बन्यौ, र फेरि
धरतीको काखमा फर्कियौ।

तिमी पानी थियौ—
नदी बन्यौ,
र जीवनका कथा बगायौ।

तिमी आगो थियौ—

दियो बन्यौ,
अन्धकार चिरेर उज्यालो बनायौ।

तिमी हावा थियौ—
श्वास बन्यौ,
अनि जीवन हल्लायौ।

तर अन्त्यमा—
तिमी आकाश भयौ।
सीमा नभएको,
शब्दभन्दा परको,
रूपभन्दा परको।"

त्यसपछि—
तुङ्दुङ्गे बोलेनन्।
उनले के भन्नु थियो र?
सबै कुरा त
आकाशले बोलेको थियो।

उनको अस्तित्व—
शब्द होइन,
आकार होइन—
शून्य बन्यो।

शून्य—
जसले सबैलाई समेट्छ,
तर आफैं सधैं मौन बस्छ।

## (च) अन्तिम शिक्षा

(तुङ्दुङ्केको मौन मन्त्र)

हे सुन—
शब्दभन्दा गहिरो त्यो क्षणमा,
तुङ्दुङ्के उभिए,
र प्रकृतिसँग बोले,
तर स्वरले होइन—
स्पन्दनले।

उनले भने—
"बादलहरू...
सिर्फ पानी होइनन्।
तिनीहरू स्वप्न बोकेका छन्,
आकाशमा उड्ने
अदृश्य कामना बनेका छन्।
तिनीहरू रोएर होइन,
देखेर बग्छन्—
भविष्यको आकृति।"

"हावा...
सिर्फ बहने शक्ति होइन।
यसको भित्र
समयको गीत गुञ्जन्छ।
पातहरू हल्लँदा
पुराना सन्देशहरू चलायमान हुन्छन्,

र हरेक स्वासमा—
मुन्धुमको कथा फुकिन्छ।"

"र पहाडहरू...
सिर्फ चट्टान होइनन्।
तिनीहरू ढोका हुन्,
जुन खोलिन्छ—
भित्र यात्रा गर्न सक्ने आत्माले मात्र।
तिनीहरू मौन छन्,
तर भित्र शताब्दीयौंको
रहस्य गुञ्जिरहेको छ।"

त्यो थियो—
तुङ्दुङ्गेको अन्तिम शिक्षा।
न लेखिएको,
न पढिएको—
तर महसुस गरिएको।
जुन सन्तानहरूले
स्वासमार्फत् बोक्न सक्छन्।

## निष्कर्ष होइन, निरन्तरता

(तुङ्दुङ्गे मुन्धुमको अमर स्वरमा)

हे मन, सुन—
टाढा देखिने त्यो रहस्य,
मनको गहिराइमै बगिरहेको हुन्छ।

तुङ्दुङ्गे उभिए—
शब्दविहीन मौनमा,
तर सृष्टिका स्वासहरूसँग
एकाकार भएर,
प्रकृतिको गहिरो स्पन्दनमा समाहित।

उनले भने—
जीवन—
यात्रा मात्र हो।
सत्य—
एक दृष्टिकोण।
र मुक्ति—
आत्माको उडान।"

त्यो भनाइ
हावामा मिसियो,
र हरेक स्वाससँग
संसारभर गुन्जिन थाल्यो।

तुङ्दुङ्गेले चेतावनी दिए—
"एक दिन आउँछ,
जब पृथ्वी रून्छिन्,
अनि अन्धकार छाउँछ।
यदि मुन्धुम हरायो भने—
सृष्टि फेरि अधोगतिमा फर्कन्छ।"

"सत्य कहिल्यै हराउन नदिनू,
कानुन कहिल्यै भत्कन नदिनू।
प्रकृतिसँगै बाँच,
सत्यको बाटोमा हिँड—
नत्र भविष्यमा
अन्धकार पुनः फर्कन्छ।"

त्यो भनिसकेपछि—
तुङ्दुङ्गे हिँडे।
टाढा क्षितिजपारि,
जहाँ शब्द शून्यमा विलीन हुन्छ।

तर—
हावा अझै बग्छ,
पानी अझै गाउँछ,
वन अझै सुसाउँछ,
र ताराहरू
त्यसै शिक्षालाई चम्काउँछन्।

उनका शब्दहरू गीत बने—

मन्त्र जस्तै गुञ्जिए।
किरात भूमिमा सधैं जिए।
मुन्धुम अमर भयो,
सृष्टिले श्वास फेरि पाइरह्यो।

तुङ्दुङ्गेको कथा—
कथामात्र होइन,
त्यो आत्माको दिव्य स्वर हो—
जसले युग युगको अन्तरिक्ष चिर्छ,
धरतीको नाभिबाट लयझैँ उदाउँछ,
हावाको सुस्केरामा धुनझैँ घुलिन्छ,
र मुन्धुमको मौन आकाशमा
सदैव गुञ्जिरहन्छ
मुन्धुम गुञ्जिरहन्छ।
■

# Author Background and Relevant Works



Dr. Nawa Raj Subba is a researcher, writer, and thinker moving across disciplinary and cultural boundaries. With a doctorate, he was trained in a rigorous academic environment, but my broader intellectual journey is fueled by an abiding interest in the human condition.

His research focuses on the oral traditions of the Kirat Limbu peoples—particularly the Tungdunge Mundhum—and their intersections with contemporary issues of the time, which include mental health, cultural identity, and social transformation. His work tries to create dialogue by bringing a more subtle and sustained observation of the world, something that has been overlooked, and by reframing it in light of modern frameworks so multiple frames for understandings of well-being and knowledge become possible.

As a writer, he is not only grappling with empirical research but also philosophical reflection, narrative, and cultural analysis. His work addresses scholarly and public audiences and aims to raise questions, prompt reflection, and contribute to conversations about justice, meaning, and human life.

A thinker is an identity that resonates with a lifelong inquiry and synthesis between disciplines of knowledge as well as rendering ideas that stir waters beyond just academic stagnation in an ever-changing global context. He appreciate the importance of critical engagement, having ethical responsibility, and integrated

understanding of pluralistic worldviews to face the intricacies of our reality.

**His works on Literature, music, and Social Science:**

***Anthologies of Poems***

*Jiwan Mero Sabdakoshma* (2063)
*Bich Batoma Byujhera* (2065)
*Yatra Adha Satabdiko* (2068)
*Chitkar* (2069) - Short Poems
Life in My Dictionary (2020)
*Jokhanama Vartaman* (2078)
Self-Reflection at the Moment (2022)

***Collections of Lyrics***

*Sahidlai Salam* (2058)
*Man Ra Mato* (2073)

***Essays***

*Manko Majheri* (2064)
*Samayako Swad* (2070)
The Mind Canvas (2021)
*Sikkaka Dubai Pata* (2079)
Both Sides of Coins (2022)

***Discography*** *(Nepali Music Audio/Video Albums)*

1. *Deshko Maya,* Collection of Patriotic songs, 2010
2. *Hami Pahile Nepali*, Collection of Patriotic songs, 2013
3. *Lukeko Rahar*, Collection of Ghazal Album Audio, 2011
4. *Amulya Jiwan,* Collection of Modern songs, 2012
5. *Bahaar Sanga,* Collection of Modern songs, 2016
6. *Himalaima Hiun*, Collection of Folk Songs, 2014

Video Albums *'Pratibimba'* Series-1 to 4.

**History and Culture:**

*Tungdunge Mundhum Samiksya (2076)*
Tungdunge Mundhum Review (2020)
*Kirat Limbu Sanskriti Manavsastriya Bivechana (2077, 2080)*
Kirat Limbu Culture, Anthropological Investigation (2023)
*Tungdunge Mundhum: Kirat Akhyan, Ek Adhyayan (2080)*
*Phyang Samba Bamsawali (2081)*
The Genealogy of Phyang Samba (2024)
The History of the Sen Dynasty of Nepal, 2025
*Nepalma Sen Jatiko Itihas, 2081*

**Explorations in Cultural and Linguistic Studies**

- Kirat and Limbu Cultural Narratives: Delves into traditional beliefs and their significance in contemporary culture. (Global Journal of Research in Humanities & Cultural Studies, 2022).
- Language Evolution in Nepal: A critical review of how Nepal's linguistic heritage has shaped identities. (GJRHCS, 2022).
- Kirat Ancestry and the Subba Surname: Unpacks the connection between the Subba surname and Kirat legacy. (IARJHSS, 2021).
- Complex Identities of Kirat, Rai, and Limbu: Investigates the ethnic complexities within these communities. (IARJHSS, 2021).

**Mythological and Historical Linkages**

- Homonyms Bridging Limbu and Dhimal: Explores the linguistic and cultural ties represented by Tungdunge and Dhangdhange. (IARJHSS, 2021).
- Kirat Mythology and Hindu Scriptures: Correlates Lepmuhang Mundhum with Matsya Purana's narratives. (JGLTEP, 2019).

- Sen and Samba Dynasties through Mundhum: Reveals historical connections rooted in oral traditions. (IARJHSS, 2022).

**Modern Linguistic Innovations in Kirat Studies**

- Evolution of Kirat Languages: Traces linguistic shifts from ancient times to modern voices. (IJISRT, 2024).
- Kirat Identity Across Time and Space: Explores the dynamic negotiation of Kirat identities. (JETIR, 2023).

**Involved in Mental Health and Health Psychology Research and Services in Nepal**

- Mental Health Services and Suicide Prevention in Nepal: Challenges, Policies, and Community-Based Solutions – A Narrative Review. Zenodo. https://doi.org/10.5281/zenodo.15009292

**Contact:**
Official website: https://nrsubba.com.np
ORCID: https://orcid.org/0000-0001-5700-2179

■